# द्वियौनिक



FREE & EQUAL
UNITED NATIONS FOR LGBTI EQUALITY

## द्वियौनिक भनेको के हो ?

द्वियौनिक व्यक्तिहरू भावनात्मक, प्रणयात्मक वा यौन रूपमा एक भन्दा बढी लैङ्गिकता प्रति आकर्षित हुन्छ । केही द्वियौनिक व्यक्तिहरूका निम्ति फरक लैङ्गिक पहिचानहरू प्रति उनीहरूको आकर्षण जीवनकालमा परिवर्तनशील हुन सक्छ । एक भन्दा बढी लैङ्गिकता तर्फ आकर्षित व्यक्तिहरूले अरु शब्द जस्तै सर्वयौनिक, बहुयौनिक, द्रवयौनिक वा क्वयेर भनी पहिचान गर्न सक्दछन् । विभिन्न अनुसान्धानहरूले फरक फरक संख्या देखाएपनि, संयुक्त राष्ट्र संघ अमेरिकाका सर्वेक्षणहरूमा २ देखि ३.१ प्रतिशत सहभागीहरू द्वियौनिक भनी पहिचान गरे ।

यी अध्ययनहरूले के पनि देखाउँछ द्वियौनिक भनेरै पहिचान नगराएपनि भन्दा १३ प्रतिशत जति महिलाहरू र लगभग ६ प्रतिशत जति पुरुषहरू एक भन्दा बढी लैङ्गिकता तर्फ आकर्षित छन् । एउटा हालैको अध्ययन अनुसार बेलायतको युवाहरूमा लगभग आधाले जति आफ्नो यौनिकता अनन्य विषमयौनिक र  अनन्य समयौनिकका कहीँ बीचमा भनी संकेत गरेका थिए । यद्यपि द्वियौनिकतालाई मिडिया तथा स्वास्थ्य अनुसन्धानमा अदृश्य रूपले प्रस्तुत हुन्छ ।





UNITED NATIONS
HUMAN RIGHTS
OFFICE OF THE HIGH COMMISSIONER

## द्वियौनिक व्यक्ति र मानव अधिकार

अन्तर्राष्ट्रिय मानव अधिकार कानुन अनुसार सबै मानिसहरूलाई हिंसा व विभेदबाट संरक्षित हुने अधिकार छ । यौन अभिमुखिकरणमा आधारित हनन समेत गरी मानव अधिकार हनन तथा उल्लङ्घनलाई सम्बोधन गर्न र रोक्न राज्यहरूलाई अनिवार्य छ ।

तथापि, वास्तविकता के हो भन्दा द्वियौनिक व्यक्तिहरूले आफ्नो यौन अभिमुखिकरणका आधारमा विभिन्न प्रकारका मानव अधिकार हननहरू भोग्नु पर्दछ । यसले स्वास्थ्य तथा हिरासत सेटिङहरूमा हुने हिंसा, यातना र दुर्व्यवहार; समान लिङ्गका व्यक्ति बीचको सम्बन्धलाई गरिने अपराधीकरण र अन्य विभेदकारी कानुनहरू; समाजिक सेवाहरूमा पहुँच, रोजगार, शिक्षा, स्वास्थ्यमा समेत हुने विभेद र लाञ्छना र अभिव्यक्तिको स्वतन्त्रता, शान्तिपूर्ण भेला तथा सम्मेलन प्रति हुने विभेदकारी प्रतिबन्धहरू पनि समावेश गर्दछ ।

## द्विद्वेषिता (द्वियौनिक प्रति घृणा)

द्विद्वेषिता वा द्वियौनिक प्रति घृणा भन्नाले द्वियौनिक व्यक्तिहरू प्रति हुने तर्कशून्य त्रास, घृणा र विमुखता हो । द्वियौनिक व्यक्तिहरूका बारे उनीहरू "मानिसको ध्यान तान्न खोज्ने", "मात्र आफूलाई परिक्षण गरिरहेका", "अनैतिक" वा "अस्थिर" जस्ता मिथ्या समावेश भएको हानिकारक रूढिवर्गिकरणहरू छन् ।

द्वियौनिक व्यक्तिहरूले भोग्नुपर्ने हिंसा, विभेद, गरिबी एवं खराब मानसिक र शारीरिक स्वास्थ्यको जरा कारण द्विद्वेषिता पनि हो । स्कटल्याण्डमा ४८% द्वियौनिक व्यक्तिहरूले द्विद्वेषिता टिप्पणीहरू सुन्नुपर्दछ र ३८% व्यक्तिहरूले उनीहरू द्वियौनिक हुनु सँग सम्बन्धित अवांछित यौन टिप्पणीहरू पाउने गरेका छन् । द्वियौनिकताको अस्तित्वलाई इन्कार गर्नु, यसलाई अदृश्य पार्नु र द्वियौनिक व्यक्तिहरूका विशेष आवश्यकताहरूलाई नीति तथा सेवा सुविधाले सम्बोधन गर्न नसक्नु पनि द्विद्वेषिताको एक स्वरूप हो । द्विद्वेषिताले व्यक्तिलाई दुर्व्यवहारको उजुरी दिने क्षमता, र सेवा सुविधा माथीको पहुँच लगायत प्रवाश्रय खोज्ने सम्भावनामा पनि असर पुर्याउँछ ।

## हिंसा

द्वियौनिक व्यक्तिहरू हिंसाको धेरै जोखिममा पर्दछन् । युरोपेली संघको एउटा अध्ययन अनुसार, ४ जना द्वियौनिक व्यक्तिहरू मध्ये १ जनाले विगतको ५ वर्षमा आक्रमित हुनुपरेको वा धम्की पाएको रिपोर्ट गरेका छन् । द्वियौनिक महिलाहरू विशेषतः यौन हिंसा

तथा बलाद्कारको जोखिममा छन् । संयुक्त राष्ट्र संघ अमेरिकामा २ जना द्वियौनिक महिलाहरूमा करीब १ जना बलाद्कृत भएको अनुभव छ, जुन विषयमयौनिक तथा समयौनिक महिलाहरूको बलाद्कार दर भन्दा ३ गुणा माथी छ । सथै ७५% द्वियौनिक महिलाहरूले यौन हिंसाका अन्य स्वरूपहरू भोगेका छन् ।

विषयमयौनिक महिलाहरू भन्दा सम्भवतः दुई गुणा द्वियौनिक महिलाहरू बलाद्कृत भएको, शारीरिक हिंसामा परेको र/वा आफ्नो घनिष्ट पार्टनरद्वारा स्टकिङमा परेका छन् । जापान, मलेसिया, पाकिस्तान र फिलिपीन्सका रिपोर्टहरूले द्वियौनिक महिलाहरूका लागि यौनिक र आन्तरिक घरेलु हिंसा मुख्य चिन्ताको विषय रहेको भनी संकेत गर्दछ । द्वियौनिक पुरुषहरू पनि यौन हिंसाको उच्च जोखिममा पर्दछन्; संयुक्त राष्ट्र संघ अमेरिकामा गरिएको सर्वेक्षणमा भाग लिने लगभग आधा संख्याले आफ्नो जीवनकालमा कुनै न कुनै प्रकारको यौन हिंसा भोगेका छन्; जुन विषमयौनिक पुरुषहरू भन्दा दुई गुणा बढी हुन पुग्दछ । एलजिबिटि समुदायलाई लक्षित गरिएको हिंसा द्वियौनिक व्यक्तिहरूले अझै थप भोग्नुपर्दछ । उदाहरणका लागि, इराकमा द्वियौनिक व्यक्तिहरू समेत एलजिबिटीका अधिकांशा व्यक्तिहरू मौखिक तथा शारीरिक दुर्व्यवहार भएको उजुरी दिन्छन् । पीडितहरूका निम्ति उपचारको अभाव, पीडकहरू प्रति छानबिन गरी कारवाही गर्ने प्रावधाको अभावले यौन अभिमुखिकरणको आधारमा हुने हिंसा दण्डहीन हुनु एक चिन्ताको विषय हो ।

## यातना तथा दुर्व्यवहार

यौन अभिमुखिकरणका आधारमा हुने यातना तथा दुर्व्हारको जोखिममा द्वियौनिक व्यक्तिहरू छन् । जबरजस्ती यौन अभिमुखिकरण परिवर्तन गराउने भनी गरिने हानिकारक, अनैतिक र अवैज्ञानिक कथित "रूपान्तरण थेरापि" पनि यस अन्तर्गत पर्दछ । समान लिङ्ग भएका व्यक्तिहरूसँग सम्बन्ध राखेको कथन अनुसार हिरासतमा लिइने द्वियौनिक व्यक्तिहरू जबरजस्ती गुदद्वार परिक्षण गराइने जोखिममा हुन्छन् । हिरासतमा लिएका द्वियौनिक व्यक्तिहरू हिसारतमा लिइएका अन्य व्यक्तिहरू तथा कारागार अधिकारीहरूबाट हुने दुर्व्यवहार तथा हिंसा, अरुबाट छुट्याइएर एकल बन्दिगृहमा राखिने एवं स्वास्थ्य सेवा, शिक्षा तथा अन्य अवसरहरूको पहुँच इन्कार गरिने जोखिममा हुन्छन् ।

## उस्तै लैङ्गिकताका व्यक्तिहरू बीच हुने सहमतीय सम्बन्धको अपराधिकरण, बिनाकारण पक्राउ र हिरासत

कम्तिमा पनि ७२ वटा देशहरूमा विभेदकारी कानुनहरूले समान लिङ्ग भएका व्यक्तिहरू बीच हुने निजी तथा सहमतीय सम्बन्धलाई अपराधिकरण गर्दछ, जसकारण द्वियौनिक व्यक्तिहरू सहित लाखौं व्यक्तिहरू बिनाकरण गिरफ्तारीमा पर्ने, अभियोग लाग्ने तथा थुनामा पर्ने उच्च जोखिममा राख्दछ - अझै कम्तिमा ५ वटा देशहरूमा केवल आफूले प्रेम गरेकै आधारमा मृत्युदण्ड दिइन्छ । जुनसुकै हिसाबले व्याख्या गर्न सिकिने अस्पष्ट भाषा भएको विभेदकारी कानुनहरूले पनि द्वियौनिक व्यक्तिहरूको अधिकार उल्लङ्घन गर्दछ र उनीहरूलाई यौन अभिमुखिकरणका बारे गरिने कार्यक्रम तथा सार्वजनिक छलफलहरू गर्न बिनाकारण निषेध गरिने वा नागरिक समाजको निधिकरणना निषेध गरिने समेतका विषयमा पनि पक्राउ पर्न सक्ने जोखिममा राख्दछ ।

## अभिव्यक्ति, शान्तीपूर्ण भेला तथा सम्मेलनको स्वतन्त्रता

विभेदकारी कानुन अतिरिक्त, द्वियौनिक व्यक्तिहरू र उनीहरूका अधिकारको रक्षा गर्ने व्यक्तिहरूलाई अभिव्यक्ति, शान्तीपूर्ण भेला तथा सम्मेलनको स्वतन्त्रताको अधिकारमा अन्य विभेदकारी निषेधहरू निरन्तर रूपमा भोग्नुपर्दछ । नागरिक समाज संस्थाहरू दर्ता गराउन इन्कार गर्ने, सार्वजनिक कार्यक्रम गर्न अनुमती प्रदान नगर्ने, संस्थाहरूमा प्रहरीले छापा मार्ने, मानव अधिकार रक्षकहरूलाई दुर्व्यवहार गर्ने र आक्रमित मानव अधिकार रक्षकहरूको संरक्षणका अभाव यस अन्तर्गत समावेश हुन्छ ।

## गरिबी र कार्यस्थलमा विभेद

संयुक्त राष्ट्र संघ अमेरिकामा गरिएको एउटा अध्ययन अनुसार न्यून-आय भएका व्यक्तिहरूका निम्ति सामाजिक साहयताको रसीदमा विषयमयौनिक महिलाहरूको तुलनामा द्वियौनिक महिलाहरू धेरै संख्यामा रहेको पाइएको छ । उक्त अध्ययनमा द्वियौनिक पुरुष तथा द्वियौनिक महिलाहरूको गरिबी दर समयौनिक पुरुष, समयौनिक महिला तथा विषयमयौनिक व्यक्तिहरूको तुलनामा उच्च रहेको संकेत दिँदछ । कार्यक्षेत्रमा हुने विभेद पनि समस्याको कारण हुन सक्छ; द्वियौनिक व्यक्तिहरूले कामको लागि निवेदन दिने क्रममा र कार्यस्थल दुबैमा विभेद भोग्नुपर्दछ । एउटा अध्ययन अनुसार, ६० प्रतिशत जति द्वियौनिक व्यक्तिहरूले कार्यस्थलमा विभेदकारी टिप्पणीहरू सुन्नुपर्ने उनीहरूको भनाई रहेको छ ।

## स्वास्थ्य

द्वियौनिक व्यक्तिहरूले आफ्नो यौन अभिमुखिकरणका आधारमा स्वास्थ्य सेवा दिन ठाडै इन्कार गरिएको समेत भोग्नुपर्दछन् । द्वियौनिकताकै आधारमा अनावश्यक यौन टिप्पणीहरू वा नकरात्मक रूढीवर्गिकरण पनि भोग्नुपरेका छन् । यस्ता विभेदहरूले उनीहरूलाई आवश्यक स्वास्थ्य सुविधामा पहुँच पुग्ने सम्भावनालाई घटाउँछ । फलस्वरूप आत्महत्या गर्ने सोच, आफैलाई नोक्सानी पुर्याउने, व्यग्रता वा उदासीनता समयौनिक तथा विषमयौनिक व्यक्तिहरू भन्दा द्वियौनिक व्यक्तिहरूले उच्च दरमा भोग्दछन् जसले फेरी घरबारविहीन हुने, दुर्व्यवहार र हिंसामा पर्ने जोखोमलाई बढाउँछ ।

## शिक्षा

द्वियौनिक व्यक्तिहरूले विद्यालयमा होमोफोबिया (समयौनिक व्यक्ति प्रति घृणा) बुलिङ र हिंसा भोग्नुपर्दछन् जसमा मौखिक र शारीरिक दुर्व्यवहार, यौन आक्रमणको धम्की तथा साइबर बुलिङ पनि पर्दछ । यसको सब्बल दीर्घकालीन नकरात्मक प्रभावहरू उनीहरूको आत्मबल, स्वास्थ्य तथा स्वस्थ जीवनमा पर्दछ । यस्ता हिंसाहरूले उनीहरूको विद्यालय परिक्षाफलमा नकरात्मक प्रभाव पार्ने देखि लिएर विद्यालय कक्षामा सहभागिता घटाउने वा विद्यालय नै छोड्न बाध्य बनाउने जस्ता असरहरू पुर्याउँछ जसले दीर्घकालीन रूपमा उनीहरूको शिक्षा एवं रोजगारको अवसरमै नकरात्मक असर पुर्याउँछ ।

# चाल्नुपर्ने कदमहरू

### *राज्य*

**1** द्वियौनिक व्यक्ति तथा उनीहरूको अधिकार रक्षा गर्ने व्यक्तिहरू विरुद्धका हिंसा, यातना तथा दुर्व्यवहारका घटनाहरू छानबिन गरी दोषीलाई कारवाही गर्ने र पीडितलाई उपचार प्रदान गर्ने

**2** यौन हिंसा तथा अन्य प्रकारका हिंसा पीडित द्वियौनिक व्यक्तिहरूको आवश्यकता बारे प्रहरी, न्यायालय अधिकारी तथा आश्रय प्रदायकहरूलाई तालिम दिने

**3** उस्तै लैङ्गिकताका वयस्क व्यक्तिहरू बीच सहमतीमा हुने सम्बन्धलाई अपराधीकरण गर्ने कानुन एवं यौन अभिमुखिकरणका आधारमा मानिसहरूलाई पक्राउ गर्ने, सजाय दिने, हिरासतमा लिने, दुर्व्यवहार गर्ने वा विभेदमा पार्ने विभिन्न कानुनहरूलाई खारेज गर्ने

**4** यौन अभिमुखिकरणका आधारमा हुने विभेदलाई निषेध गर्ने र शिक्षा, स्वास्थ्य, रोजगार, आवास तथा सार्वजनिक सेवा समेतका क्षेत्रमा द्वियौनिक व्यक्तिहरू समावेश हुने प्रकारको विभेद विरुद्धका नीतिहरू बनाउने

**5** स्वास्थ्य सेवा प्रदायकहरूलाई संवेदनशीलतामुखी तालिम प्रदा गर्ने र द्वियौनिक व्यक्तिहरू र उनीहरूको परिवारले उनीहरूका विशेष चिन्तनहरू सम्बोधन हुने हिसाबले सुरक्षित तथा विभेद रहित स्वास्थ्य सेवा प्राप्त गर्न सकून् भनी सुनिश्चित गर्ने

**6** शिक्षा प्रणाली मार्फत द्वियौनिकता बारे जनचेतना जगाउने र सार्वजनिक जनचेतना अभियानहरू मार्फत नकरात्मक रूढीवर्गिकरण तथा पूर्वाग्रहलाई उन्मुलन गर्ने

**7** द्वियौनिक व्यक्तिहरूको अभिव्यक्ति, शान्तीपूर्ण भेला तथा सम्मेलनको स्वतन्त्रतालाई संरक्षण र संवर्द्धन गर्ने

**8** उनीहरूका अधिकारमा प्रभाव पार्ने अनुसन्धान, ऐन कानुन तथा नीति निर्माणको विकासमा द्वियौनिक व्यक्ति तथा संस्थाहरूको परामर्श लिने र सहभागी गराउने विषयलाई सुनुश्चित गर्ने

**9** गरीबि, रोजगारी, आवास, स्वास्थ्य, शिक्षा तथा सार्वजनिक सुविधाहरू प्रतिको पहुँचका सम्बन्धमा द्वियौनिक व्यक्तिहरूको अवस्थाका बारेमा असंगत डाटा उत्पादन गर्ने अनुसन्धानहरूलाई साहयता प्रदान गर्ने







## *मिडिया*

**1**

द्वियौनिक व्यक्तिहरूका आवाजलाई फेयेचर गर्ने एवं पत्रपत्रिका, टेलिभिजन, रेडियो तथा समाजिक संजाल कभरेजमा द्वियौनिक व्यक्तिहरूको सकरात्मक प्रतिनिधित्व गराउने

**2** विभेदकारी भाषाको प्रयोग नगर्ने र द्वियौनिक व्यक्तिहरू बारे व्याप्त मिथ्या तथा हानिकारक रूढीवर्गिकरण विरुद्ध लड्ने

## *तपाइँ, तपाइँको साथीहरू र अरु सबैले फरक पार्न सक्नुहुन्छ*



FREE & EQUAL
UNITED NATIONS FOR LGBTI EQUALITY

**1** द्वियौनिक व्यक्तिहरू, उनीहरूको मुद्दा तथा चिन्तनहरू बारे आफूलाई शिक्षित पार्नुहोस्

**2** तपाइँ र तपाइँ आसपासका व्यक्तिहरूमा द्विद्वेषिता (द्वियौनिक प्रति घृणा) उन्मुख भाषा, मिथ्या तथा नकरात्मक रूढिवर्गिकरणका लागि शून्य सहनशीलता होस् भनी सुनिश्चित गर्नुस्

**3** द्वियौनिक व्यक्तिहरू प्रति हुने विभेद र हिंसा बारे बोल्नुस् र उजुरी दिनुस्

**4** अरुहरूको गोप्यनिताको सम्मान गर्नुस् र कसैको यौन अभिमुखिकरण बारे कुनै अनुमान गर्ने काम नगर्नुस्

संयुक्त राष्ट्र संघ द्वारा अङ्ग्रेजी भाषामा प्रकाशित उक्त तथ्यपत्र क्वयेर युथ ग्रुपले अनुवाद गरेको हो।





UNITED NATIONS
HUMAN RIGHTS
OFFICE OF THE HIGH COMMISSIONER